

महेश-संस्कृत-गुरूकुलम्

महेश-बाल-समूहको तेस्रो प्रकाशन

# महेश-बाल-साहित्य-उद्यान

वर्ष-४ अङ्क-३ २०७४ बैशाख

**सल्लाहकारहरू:**
स्वामी केशवानन्द गिरि
नीराजन पन्त
दीपककुमार सिग्देल
नारायणप्रसाद घिमिरे
चिरञ्जीवी खतिवडा
पर्वत घिमिरे
कोमल नेपाल

**सम्पादक:**
प्रकाश धिताल
विजय रिजाल
शिवहरि नेपाल

**कम्प्युटर टाइप:**
अभिमन्यु ढुङ्गाना
समुद्र रिमाल

**कम्प्युटर सेटिङ**
सफल पौडेल

**प्रकाशक:**
महेश-बाल-समूह
महेश-संस्कृत-गुरुकुलम्
देवघाट-२, तनहूँ

**वेव साइट:**
www.gurukulam.edu.np

**ईमेल ठेगाना:**
maheshashram@hotmail.com

## सम्पादकीय........

प्रातःस्मरणीय गुरुज्यूको आशीर्वाद एवम् सहृदयी पाठक महानुभावहरूको काव्यतिर्सनाले गर्दा यस उद्यानले यस वर्ष पनि तेस्रो पटक साहित्यिक मनहरू माझ प्रकट हुने अवसर गुमाएको छैन । बालकविहरूको उत्साहको सागरमा आएका काव्यात्मक तरङ्गहरूले सबै को मन आकर्षित पार्छ भन्ने आशा गरेका छौँ । यस अङ्कले अघिल्लो वर्षभन्दा दोब्बर र परिष्कृत काव्यपुष्पहरूको संसर्ग पाएकोले पुस्तक झनै उत्कृष्ट भएको आभास पाएका छौँ ।

भावात्मक र उपदेशमूलक साहित्य आजको आवश्यकता भएको हुँदा यथाशक्य तदनुरूप रचनाहरू नै यस उद्यानमा रोप्ने प्रयत्न गरेका छौँ । साप्ताहिक साहित्य गोष्ठीमा काव्यवाचन गर्दै साहित्य शिखरमा लम्किँदै गरेका बालकविहरूका रचनाहरूले यस उद्यानमा सुवास छर्दै आध्यात्मिक र भावुक मनहरूलाई आफ्नो वशमा लिन सकून् भन्ने कामना राख्नु हाम्रो आशावादिता हो । यो यात्रा यसरी नै जारी रहे यिनै बालकविहरू भविष्यमा नेपाली साहित्याकाशको उज्वल तारा बनेर उदाउनेछन् भन्ने कुरामा सन्देह छैन । यस उद्यानका हितैषी समस्त पाठकहरूबाट रचनाहरूप्रति सुझाव मलि अर्को अङ्कमा अझै चमक आउनेछ भन्ने कुरामा हामी विश्वस्त छौँ ।

यस अङ्क प्रकाशनार्थ सहयोग गर्नुहुने गुरुहरूलाई विशेष नमन गर्न चाहन्छौँ । “अपारे काव्यसंसारे कविरेव प्रजापतिः” अर्थात् काव्यको ‘संसारमा कवि नै सृष्टिकर्ता हुन्छ’ भने झैँ सुन्दर काव्यको सृष्टि गरेर यस काव्यसंसार लाई मूर्तरूप दिनुहुने सम्पूर्ण बालस्रष्टाहरूलाई पनि हामी विशेष धन्यवाद दिन चाहन्छौँ । अन्त्यमा स्रष्टालाई उचाइको शिखरमा पुर्‍याउन सहयोग गर्ने पाठकहरूलाई स-धन्यवाद यो साहित्य-उद्यान समर्पण गर्दछौँ ।

सहयोगार्थः- रू.५०/-

# बाल समूहका पदाधिकारीहरू



**प्रकाश उपाध्याय**
अध्यक्ष



**शुकदेव भट्टराई**
उपाध्यक्ष



**विजय रिजाल**
कोषाध्यक्ष



**शिवहरि नेपाल**
सचिव



**गणेश भण्डारी**
सहसचिव

## अन्य विशेष सदस्यहरू

- अनमोल धिताल
- सर्वेश्वर ढुङ्गेल
- प्रज्वल खनाल
- सुरेशनारायण गौतम
- नीराजन रिमाल
- ऋषभ अर्याल
- प्रवीण पराजुली
- चन्द्रप्रसाद खतिवडा
- मनोजप्रसाद पराजुली
- सागर पोख्रेल
- रमेश तिमिल्सिना
- प्रभात रिजाल

# बालकवि-सूची



# सहिद

✍ *विजय रिजाल, कक्षा ९*

*–शार्दूलविक्रीडितम्*

नेपाली सबमा विदेशतिरको चाहा छ बढ्दै किन
नेपाली पन धर्म संस्कृति भने चाहन्न क्वै सम्झिन ।
हाम्री ती जननी रुदैँ दिनदिनै गर्छिन् गुनासो जब
तिम्रो नाम लिनेछु हे शहिद हो खाँचो छ तिम्रो अब ॥१॥

आफ्नो स्वार्थ गरेर त्याग सहसा नेपालको खातिर
गोलीको बिचमा परी रगतको खोलो बग्यो आखिर ।
तिम्रो आज महान कीर्ति छ यहाँ त्यो त्यागको हो फल
तिम्रै गीत सुनाउनेछ दिनहुँ यो गण्डकीको जल ॥२॥

बेची नाम सदैव वीरहरूको हिंड्छन् हजारौँ जना
तिम्रो मार्ग चुनेर यो समयमा हिंड्दैन कोही यहाँ ।
बेची देश र भन्छ राष्ट्रिय कथा यो देश सञ्चालक
तिम्रो मात्र भयो अभाव किन हो हे राष्ट्र संरक्षक ॥३॥

तिम्रो मृत्यु भयो र मर्छ दुनियाँ बाटो छ यौटै तर
तिम्रो कीर्ति छ देशको हरकुना गङ्गासरि निर्मल ।
सानो सोच लिएर यो मगजमा डुल्नेहरूले कतै
तिम्रो त्यो महिमा न बुझ्छ उसले बस्नेछ मात्रै रुदैँ ॥४॥

छातीले तरवार छेक्न पनि ता स्वीकार नै गर्दियौ
अर्को बाँच्छ भनी सहर्ष कसरी आफैँ बरु मर्दियौ ।
तिम्रै तस्विर मात्र यी नयनले छर्लङ्ग देखेपनि
तिम्रो यो इतिहास लेख्न म बसेँ लेख्दैन यो लेखनी ॥५॥



# फर्केर आऊ अब

–स्रग्धरा

कुशल नेपाल, कक्षा ९

वाजी थापी जवानी फगत समरमा स्वार्थ त्यागेर लाग्दा
बूढा बाबा र आमा परिजन सबको मोह बिर्सेर जाग्दा ।
गोली थापेर छाती पटपट फुटदा कष्टको घाउ बिर्से
गोर्खालीको महत्ता गगन परिधिमा सूर्य झैँ ताप छर्के ॥१॥

नेपाली वीर हामी अतुलित बलको एकता उच्च नारा
भागे अङ्ग्रेज वैरी समर कुशलता शौर्य देखेर सारा ।
नेपाली नाम सुन्दा थरथर भई काप्न थाले विदेशी
हामी सन्तान त्यस्ता अमर शहिदका फाल्दछौ आज सेखी ॥२॥

खाली बन्दैछ राष्ट्र हर वखत यहाँ भाग्दछौँ के विदेश
आफ्नो नेपाल प्यारो नजिक हृदयका साग सिस्नु छ वेश ।
बूढा लूला र बच्चा अबल मनुजको बास बन्दैछ ग्राम
मेला–पातो र भेला विपद समयमा छैन कोही जवान ॥३॥

आमा रुन्छिन् कुनामा तनय विरहले अश्रुधारा बगाई
छोरा पार्छन् मलीलो अविरल श्रमले त्यो मरुभूमिलाई ।
आफ्नो उत्साह सारा अजय समयले थोत्रियो लौ जवानी
फर्किन्छौँ देश फेरी खतम हुन गयो रोगले जिन्दगानी ॥४॥

हे साथी आऊ फर्की परिजन सबको प्यार सम्झेर आऊ
आफ्नो सर्वस्व जानी अटल हृदयले राष्ट्रको गीत गाऊ ।
बारीमा वीज रोपी अटुट श्रमगरी अन्न अर्जेर खाऊ
नेपाली शौर्य बोकी विकसित गर हे देश राम्रो बनाऊ ॥५॥







# प्रकृति

विजय पोखरेल, कक्षा ७

*शिखरिणी*

अहाँ ! कस्तो राम्रो हिमशिखरको भ्रमण हुने
सुनौला ती देख्दा पथर गुथिएको मन हुने ।
कहाँ पाउँ यस्तो कलकल नदी नित्य बहने
यहीँ हाम्रो सारा मनुजहरूमा मोह बढ्ने ॥१॥

कला साझाँ हाम्रो प्रकृति बीचमा दिव्य धरती
अनेकौ भाषामा रमण गरने ती मन भरी ।
सधैँ आशा खुल्ला हृदयहरूमा सो भरिने
यहीँ हाम्रो शोभा सगर बीचमा दिव्य रहने ॥२॥

कतै थोत्रा मैला मनुजहरूको बाहिर भने
छदै छैनन् भित्री हृदयहरूमा दूर्जन कुनै ।
म खोज्दै जादैँ सार अझ अलिहेर्दै मनुजको
हिमालको झैँ चाँदी हृदय सब स्वच्छन्द जनको ॥३॥

खुलाऊ भन्दैछन् प्रकृति भरमा धार जगको
यहीँ हाँसौँ खेलौँ पढिरहनु केही श्रुति मिठो ।
बनाऊ भन्ने हो श्रुतिमय मिठो वाक्यरसमा
सबैको आस्थामा जनमजहरू शास्त्र बसमा ॥४॥

अनेकौ देख्दैछौ भुवनभरको पुञ्जलहरी
सधैँ हेर्छौँ राम्रो सुगम शुभको त्यो मनभरी ।
कहाँ राज्ने खोज्ने सकिनँ सहजै साथ भरमा
सजाऔँ भन्दैछन् सगरभरको धर्ति सबमा ॥५॥







# आवश्यकता

*–स्रग्धरा*

*समुद्र रिमाल, कक्षा ९*

स्वार्थी लोभी र पापी मन सब जनको शान्ति सन्तोष छैन
सच्चा कर्तव्य आफ्नो पनि अब मनमा लेश थोरै रहेन ।
लड्दैछन् दाजुभाई रिपुसरि घरमा एकता शक्ति छैन
पत्निमा प्रेम सच्चा अखिल पुरुषमा प्रेम सन्तोष छैन ॥१॥

आफ्ना सम्पूर्ण सेवा शयन सुखहरू स्वार्थ त्यागेर लाग्ने
सेवा सम्पूर्ण ठानि निशि दिन बलले शुश्रुषा गर्न खट्ने ।
पर्दा आपत्ति ठूलो तर पनि मनले साथ छोड्दै नछोड्ने
खाँचो बन्दैछ भाइ अखिल जगतमा लक्ष्मणै प्रेम पूज्ने ॥२॥

पत्नीको धर्म जानि हरक्षण पतिको पाउमा हात मोल्ने
स्वामी हुन् ईश मेरा भनिकन मनले प्रेम अर्पेर रम्ने ।
को होलिन् आज पत्नी हृदयत पतिको पाउमा माथ राख्ने
सत्पत्नीको छ खाँचो तन मन धनले जानकी बन्न खोज्ने ॥३॥

आज्ञा माता पिताको प्रभुचरणको प्राप्तिका निम्ति बाटो
प्राणीको धर्म सच्चा जलथल चरमा बाड्नु हो प्रेम साँचो ।
धेरै बाधा व्यथामा पनि हृदयमहाँ खेल्छ उन्मुक्त हाँसो
यस्ता आदर्श रच्ने रघुकुलपतिको रामको रैछ खाँचो ॥४॥









## मेरो चाहना

✍ *प्रवीण काफ्ले, कक्षा ८*

*–उपजाति*

विशाल तृष्णा मनका हटाई
प्रसन्न हाँसो तनमा फिजाई ।
भुलेर सारा जन बन्धुलाई
एकान्तमा रम्दछु गीत गाई ॥१॥

शरीर नाशिन्छ विभिन्न चोला
अनित्य संसार भएर होला ।
हुनेछ यो एक मुठी खरानी
त्यागेर सारा बनिदिन्छु ज्ञानी ॥२॥

म एकताले मनलाई बाधूँ
सन्मार्ग लागेर म रमुँ म नाचूँ ।
जपूँ म श्रीराम यहाँ सधैँभरि
तरूँ म संसार यहाँ कसो गरि ॥३॥

म प्रेरणाको सब गीत गाऊँ
मिठो म खाऊँ र मिठो खुवाउँ ।
आदर्श श्रीकृष्णको नित्य गाऊँ
म ब्रह्म हुँ ब्रह्ममहाँ बिलाऊँ ॥४॥



## नेपाल

✍ *विवेक पोखरेल, कक्षा ८*

*–उपजाति*

सौन्दर्यमा सुन्दरता मिलेर
निर्माण नेपाल भयो नि हेर ।
गङ्गा बहन्छिन् अति दिव्य रम्य
टलक्क टल्किन्छ गिरी सुरम्य ॥१॥

खेल्छन् बयेली सब अन्न खेतमा
हिमांशुले छर्दछ शीत रातमा ।
रमाई खेती गरि बस्दछन् जन
फल्छन् सुनौला मिहिनेत कञ्चन ॥२॥

परिश्रमी छन् सब कर्मनिष्ठ
ध्यानी र योगी सब छन् बलिष्ठ ।
दिन्छन् सबै हात र साथ चाहिंदा
कोही न ठूलो र न सूक्ष्म छन् कदा ॥३॥

आफ्नो कुनै छैन कुनै पराई
मिलेर बस्छन् सब दाजुभाई ।
पुर्खाहरूको बलवीरतामा
रमाउँछन् मानिस एकतामा ॥४॥







# वीर

–स्रग्विणी

*अभिमन्यु ढुङ्गाना, कक्षा ९*

देशको लागि नै जो मरे मानिस
बिर्सियो प्राण औ निक्लियो साहस ।
वीर उत्साहका अग्रणी मानिए
वीरको नामले भाजती जानिए ॥१॥

देश हो ज्ञानको अन्धतामा थियो
एकलौटी यहाँ राज राणा थियो ।
गाड्दियो लौ प्रजातन्त्रको त्यो मियो
बाल्दिए जोस उत्साहको दीप त्यो ॥२॥

धूर्त राणाहरू वीरको जोसले,
राज्य जाला भनी उफ्रिए क्रोधले ।
चारलाई त्यहाँ मृत्युको दण्ड त्यो
पोल्न आन्दोलनै घोषणा त्यो गरे ॥३॥

देशको प्रेमले प्राणको मोह नै
बिर्सिए वीरले त्यो निजि स्वार्थ नै ।
देश हो वीरको एक साझा घर
बन्धु हुन् ती प्रजा देशको खातिर ॥४॥

वीर मुस्काउने मर्दछन् युद्धमा
धीर रुञ्चे कहाँ हुन्छ हे दुःखमा ।
जान्दथे भिन्नता वीरले आखिर
आत्म मर्दैन है देह हो आखिर ॥५॥







## शिव

ज्ञानेन्द्र भण्डारी, कक्षा ६

*मात्रिक लय*

हे ! शिव तिम्रो कति महिमा छ
कति धेरै गुणकति गरिमा छ ।
कसरी प्रभुको परिचय पाऊँ
केवल तिम्रै शरण म आऊँ ॥१॥

दुःख हटाऊँ कष्ट भगाऊँ
प्रभुकै पदमा चित्त लगाऊँ ।
हरदम प्रभुमै रहन म पाऊँ
प्रतिपल उनकै गीत म गाऊँ ॥२॥

घुमिरहने यो भवसागरमा
तिमी डुङ्गा बन पार लगाऊ ।
चञ्चल मन यो चलिरहने भो
यसको पनि उपचार लगाऊ ॥३॥

हे ! विद्येश्वर विद्या दाता
चरण म पर्दछु जानी नजानी ।
देऊ विद्या विनय प्रशस्त
बनाऊ विनयी दानी ज्ञानी ॥४॥



## राम

टेकराज रिजाल,कक्षा ७

*भुजङ्गप्रयातम्*

म खाऊँ म हाँसूँ म गाऊँ म नाचूँ
सदा रामको नाममा नाम साँचूँ ।
उनी सृष्टि हुन् फेरी स्रष्टा उनै हुन्
सबैतत्त्वकासारयीरामनैहुन्॥१॥

यहाँ हिंड्न बाटाहरू छन् अनेकौँ
जहाँ सत्य भेटौँ त्यहीँमात्र टेकौँ ।
सदा भक्तिमा मग्न होऊँ म नित्य
सदाराम भेटूँयही चित्तभित्र॥२॥

म सौन्दर्य वास्ना तिमीमाझ छाड्छु
सयौँ कष्ट पाए पनि नाम जप्छु ।
यही धर्मको गर्छु रक्षा सदैव
म सन्मार्गमा हिंड्छु छोडी कुकर्म॥३॥

म लड्दा तिमीले उठाऊ मलाई
गरुँ चित्तदेखिन् अरूको भलाई।
सदा जप्न पाऊँ यही रामनाम
सदाचित्तमा यै लगाऊँ लगाम॥४॥






# आमा तिमी नै भन

–शार्दूलविक्रीडितम्

मोहित पौडेल, कक्षा ७

जन्मन्थे पहिले ती सज्जनहरू यो देश नेपालमा
सच्चा मानिस छैन तत्पर सबै हत्या र हिंसामहाँ ।
सोझो मार्ग समाउँदा कठिन भो गाह्रो भयो जीवन
हत्या धेर बढ्यो म बाचूँ कसरी आमा तिमी नै भन ॥१॥

नेपालीपनको छिरेर मनमा गर्दै थिए गौरव
काटाकाट गरेर दुर्जन बनी यो देश भो रौरव ।
यस्ता काम छोडेर मित्रजनले लागे भने हर्क्षण
पक्कै हुन्छ विकास यो मुलुकको आमा तिमी नै भन ॥२॥

नेपाली जनता सधैँ जगतमा छाती फुलाईकन
बाँचून् एक बनी धनी गरिबको फाटो सिलाईकन ।
माटोमा पसिना बगाइ श्रमको हीरा फलाउन् अब
आफ्नो देश नछोड हे युवक हो आमा तिमी नै भन ॥३॥

देखिन्छन् सबमाझ भेद दिनहूँ देखिन्न खै एकता
हाम्रो राष्ट्रियता हराउन गयो पाइन्न खै खै कता ?
हत्यामा मन जान्छ, मानिसहरू सन्मार्ग छाड्छन् किन ?
यस्को अन्त्य हुँदैन ? हुन्छ कहिले ? आमा तिमी नै भन ॥४॥







# आमा

–शार्दूलविक्रीडितम्

✍ *शिवहरि नेपाल, कक्षा ९*

आमा नै सबथोक हो जगतमा आमा विना के छर
आमा नै नभए यहाँ जगतमा को रम्छ होला तब ।
आमा कै सब त्यागमा जब तिमी जन्म्यौ र हुर्कि गयौ
यस्तो हो भनि बुझ्दछौँ तर तिमी आमा किन भुल्दछौ ॥१॥

आमा भन्दथिइन् म सानु रहँदा छोरा नजाऊ कतै
छैनौ पुत्र तिमी भने नजिकमा हुन्छु म होला त्यसै ।
तिम्रो पाउ समाइ बस्न सकिन अन्तै म हिंड्दै गएँ
जन्मायौ किन धर्तिमा जननि हे बिग्रिरहेको भएँ ॥२॥

जान्थेँ खेल्न भनेर साथिहरूकाँ हिंड्थे बिहानै जब
हेर्थ्यौ पुत्र कहाँ गयौ भनि तिमी खोज्थ्यौ मलाई तब ।
मेरै निम्ति भनेर सानु म छँदा छाती सुकाई गयौ
मैले वर्णन गर्न सक्दिन अहो ठूली तिमी नै भयौ ॥३॥

तिम्रो वर्णन गर्न खोज्छु जहिल्यै मेरो मुटु काप्दछ
केही आँट गरुँ भने पनि यहाँ होसै कता भाग्दछ ।
आमाको महिमा अपार छ अहो सम्मान को गर्छ र
छातिमा जननी सजाउ र तिमी सम्मान गर्ने गर ॥४॥









# जीवन

*शार्दूलविक्रीडितम्*

*प्रकाश उपाध्याय, कक्षा ९*

**बाटो निर्जल शून्यतासँग कुनै सत्प्रेम छर्दै छ कि**
**आफैँ पूर्ण बनेर यात्रुहरूमा पूर्णत्त्व भर्दै छ कि ।**
**यात्रा एकल बन्छ आज सबको सन्त्रास भो केवल**
**कस्ले ढाक्छ हरेक नग्न तनमा सौहार्दको आँचल ॥१॥**

**जाऊँ लाग्छ सधैँ–सधैँ भरि कतै चल्नु रह्यो जिन्दगी**
**चल्दै केवल आज निर्मल छरे बग्दो कुनै गण्डकी ।**
**यौटै क्षेत्र चुनेर बस्दछ सधैँ सर्वोच्च मन्थाचल**
**को भन्ला भन छैन त्यो हिमगिरी हाँसे पनि निर्मल ॥२॥**

**एकै ठाउँ चुनेर बस्न सजिलो होला कहाँ सज्जन**
**यो दौडान जित्यो कुदेर कसले साथी तिमी नै भन ।**
**अर्काको गतिमा स्वयं गति लिने मान्छे थियो दुर्मति**
**ठेल्छन् चुम्बकलाई चुम्बक स्वयं निष्कर्ष निस्क्यो कति ॥३॥**

**एकै चित्त गरेर बस्नु सबले सन्तोष हो जीवन**
**जे देख्छौ शुभदृष्टिले जगतमा त्यै हुन्छ वृन्दावन ।**
**भित्री चित्त फुल्यो भने कमलको सौगन्ध्य पाइन्छ रे**
**मीठो बोल सधैँ सधैँ अब कहाँ सङ्गीत चाहिन्छ रे ॥४॥**









## मेरो विचार

✍ *अनन्त सुवेदी, कक्षा ७* *–उपजाति*

म काम गर्नेछु सदा मिलेर
मौरी छ सानो मिहिनेत हेर ।
छान्ने छु लक्ष्य म सुकर्म गर्छु
सुकर्मबाटै भव पार तर्छु ॥१॥

हत्या र हिंसा अबबाट त्यागूँ
खराब छोडी सत मार्ग लागूँ ।
शुभावना छर्छु रमाई मर्छु
सुभावबाटै भव पार तर्छु ॥२॥

चाहन्छु गर्न शिवको नि ध्यान
म काम गर्छु न बढाई सान ।
अज्ञानको लागि म नित्य लड्छु
ज्ञानी भएरै भवपार तर्छु ॥३॥

सत्कर्ममा लीन रहोस चित्त
सद्धर्मदेखि नबनूँ म भिन्न ।
यही छ इच्छा अब भित्र मेरो
अज्ञानको मेट्दछु यो अँधेरो ॥४॥



## नेपाल

✍ *प्रज्ञान कुइँकेल, कक्षा ६* *– उपजाति*

नेपाल यो स्वर्ग समान देश
विभिन्न जाती र अनेक भेष ।
हिमालको काख सुरम्य लाग्छ
खोला नदी ताल बनेर बग्छ ॥१॥

अनेकतामा पनि एकता छ
सदैव नेपाल विशाल लाग्छ ।
रुँदैन कोही पनि दुःख पाई
मिलेर बस्छन् सब दाजुभाई ॥२॥

चराचुरुङ्गी वनभित्र गर्छन्
कुहू–कुहू कोकिल गाइरहन्छन् ।
यहीँ पुनर्जन्म म पाउनेछु
नेपालको गान म गाउनेछु ॥३॥

डाँडा र काँडा वनभित्र भित्र
नेपालको कोर्छु विशाल चित्र ।
गरिन्छ जे काम यहीँ गरौँला
नेपालको नाम जपी मरौँला ॥४॥







# नेपाल

–मालिनी

✍ सुजन खनाल, कक्षा ६

सबतिर वन डाँडा छन् सबै ताल सारा
हरित वन तृणैको खेल्छ लाटोकोसेरो ।
मुनिजन सब बस्दै भुल्दछन् मोहमाया
हरिसित मन जोडी पस्दछन् ती गुफामा ॥१॥

सिरिसिरि जब हावा शीत बोक्दै बहन्छ
नव नव नव ऊर्जा निक्लँदा देश रम्छ ।
सरित भरित खोला उर्लदैँ ती वहन्छन्
मनुज जगत सारा मोक्षको ज्ञान गर्छन् ॥२॥

अटल हिमगिरीले राष्ट्रको गर्छ रक्षा
नयन त शिव चिम्ली गर्दछन् ती तपस्या ।
पशुपति पनि बस्छन् हुन् यिनी तीर्थराजा
सुरगण सब रम्छन् गर्दछन् आज राज ॥३॥

प्रचुर वन र पाखा देशका श्रेष्ठ स्रोत
भ्रमण अब गरेमा भेटिएला नि स्रोत ।
अपुग अब हुँदैनन् देशले दिन्छ हेर
ल नबन परदेशी देशको स्रोत खोज ॥४॥









# नेपाल

दीपेश बाँस्कोटा, कक्षा ८

–शार्दूलविक्रीडितम्

आफ्नो देश विदेशको शरणमा जादै छ अञ्जानमा
नेता चित्त बुझेर बस्छ खुशी भै नेपालको शानमा ।
साझा सम्पत्ति संविधान रचियो ताली छ सम्मानमा
बढ्यो क्रोध छिमेकको मनमहाँ धक्का पऱ्यो मानमा ॥१॥

सारा संसद संविधान सजिलै संस्कार संरक्षण
देख्छन् दिल्ली वसी वसी शयनमा हर्षित वा हर्क्षण ।
फेरिन्छन् सब संविधानहरूका प्रत्येक पङ्क्ती पनि
गाथा मात्र सिमीत भो वदनमा स्वाधीनताको धनी ॥२॥

ताँती लोड गरेर एल्पीहरूमा नुन्तेल वा तीउन
सारा भोग्य पठाउने उही भयो शून्ना छ उत्पादन ।
आफ्नो यो तनको विदेशी कपडा फाल्छौ भने लौ अब
सानो वस्त्र कहाँ रहन्छ तनमा बुङ्गो हुनेछौ तब ॥३॥

नाना आस गरी विकास मनमा उड्छन् हजारौं दल
लाग्छन् देश विकासको चरणमा लाखौं विदेशी बल ।
भन्छन् दु:खपिडीत आम जनता एक्काइसौं सालमा
हो दुर्भाग्य थियो भयो जनम हे ! यो देश नेपालमा ॥४॥









# सरस्वती

*–झ्याउरे लय*

✍ *मिलन मरासिनी, कक्षा ७*

सरस्वती देवी पूज्दछौँ हामी सदैव तिमीलाई ।
विद्याकी खानी तिमी हौ थाछ विद्या देऊ हामीलाई ॥१॥
सुन्दर राख्छौ अर्चना गर्छौँ दिन्–दिनै तिमीलाई ।
कोमल शब्दहरूले व्याप्त गराइदेऊ हामीलाई ॥२॥
अनन्त ज्ञानका पारखी तिमी हामीलाई बनाइदेऊ ।
कलम किन्छौ पुस्तिका किन्छौ लेख्नलाई सिकाइदेऊ ॥३॥
मिहिनेत गर्छौँ साहस गर्छौँर् सन्मार्ग देखाइदेऊ ।
विद्या हो अमृतमय रूपी हामीलाई सिकाइदेऊ ॥४॥



# गुरुकुल

*–झ्याउरे लय*

✍ *प्रवीण नेपाल, कक्षा ६*

रमाइलो लाग्छ यो गुरुकुल यो घर मेरो हो ।
सत्य र शान्ति प्रेम र भक्तिको सेरो फेरो हो ॥१॥
गुरु र चेला मिलेर खान्छौ साथमा बसेर ।
तयार गर्छौँ रुद्री र वेद कम्मर कसेर ॥२॥
साथी नि धेरै दाजु नि धेरै यो गुरुकुलमा ।
संध्या र पाठ आरती गर्छौँ मिलेर हुलमा ॥३॥
गुरु नि ठूला घर नि ठूला सबै थोक ठूलै छन् ।
किताब ठूला भागवत वेद कौमुदी ठूलै छन् ॥४॥







# मेरो इच्छा

*–भुजङ्गप्रयातम्*

*शुकदेव भट्टराई, कक्षा ८*

नराखी कुनै आश मिल्ला नमिल्ला  
कसैको यहाँ साथ मिल्ला नमिल्ला ।  
खुशीले म बाँच्नेछु सारा जवानी  
सधैँ उच्च सम्मानमा जिन्दगानी ॥१॥

म चाहन्छु छाप्राहरू मुस्कुराउन्  
सधैँ प्रात आनन्द मानी रमाउन् ।  
यही काममा यो जवानी लगाऊँ  
सबैमा म सम्पूर्ण आनन्द पाऊँ ॥२॥

म वर्षातमा बस्छु छाता बनेर  
र अन्धाहरूसँग आँखा बनेर ।  
कुनै प्रेमको मूर्ति जस्तै दुरुस्तै  
सधैँ बन्न चाहन्छु आत्मीय जस्तै ॥३॥

सधैँ फूल जस्तै म मुस्काइदिन्छु  
भ्रमर झैँ मिठो गीत घन्काइदिन्छु ।  
जसोरि तिमी टिप्दछौ फूललाई  
सबै ठाउँमा बस्छ जो मग्मगाई ॥४॥

म संकल्प जे गर्छु भित्री दिलैले  
पुरा गर्छु भन्ने छ विश्वास मैले ।  
तिमीले सधैँ मात्र सन्तुष्टि देऊ  
र साना कुरामा सही दृष्टि देऊ ॥५॥



सानो प्वालले जाहाज डुबाउँछ





# चरा र मानव

✍ *रोशन रिजाल, कक्षा ८*

*–मालिनी*

चिर चिर चिर गर्दै उड्छ आकाश माथि
अनि समय मिलेमा चाहरा खोज्छ साथी ।
ध्वनि मधुर चरीको सुन्छु श्रोता बनेर
प्रतिदिन कवि काव्यै रच्दछन् धेर बेर ॥१॥

कति चिर चिर भन्दै गीत यो भर्छ पक्षी
मनुज सब जुटेमा हुन्न कोही नि अल्छी ।
सिरिरि सिरिरि हावा बग्दछन् यो विहान
अब नर रचनामा बन्दछन् यी विमान ॥२॥

खग सब सुख लिन्छन् एक अर्का मिलेर
सब मनुजहरूमा प्रेरणा यो छ हेर ।
किन नर झगडाले पूर्णता मिल्छ भन्छन्
सुजन सबल मिल्दा देश बिग्रन्छ भन्छन् ॥३॥

मनुज सब मिलेरै बस्दछन् भन्न पाऊँ
सब मनुजहरूनै एक हुन् भन्न पाऊँ ।
अब नयन रसायो मुर्ख बानी म देख्छु
खग र नरहरूको यही सम्बन्ध देख्छु ॥४॥









# मानव

✍ *सागर पोखरेल, कक्षा ७* —*स्रग्विणी*

सूर्य झैँ चम्किई ज्ञान बल्थ्यो जब
अन्धता तुल्य अज्ञान हट्थ्यो तव ।
बुद्धिको राजधानी थियो मानव
ज्ञानयो हुन्नथ्यो त्यो बन्यो दानव॥१॥

जिन्दगी जाग्द श्रद्धा भए जोसमा
आश नै माग्द रे मात्र वेहोसमा ।
विश्वमा घुम्नुमा मात्र के स्वाद छ
ज्ञानमा एक पीयुष आस्वाद छ ॥२॥

धर्तिका पुत्र हौँ धर्ति मै बस्नुछ
जन्मको चक्रको बन्धमा फस्नुछ ।
रोज बाटो स्वयं मुक्तिका खातिर
मोक्षठूलोथियोविश्वमाआखिर॥३॥

आउ खाउ सधैँ विश्व तिम्रो थियो
बन्धुता भैदिए विश्व हाम्रो थियो ।
वाँच सन्तोषले हाँस सन्तोषले
यो अहंकारको हुन्न उद्घोषले ॥४॥

धर्तिको पुत्र हो बाल हो जीवनी
भाग्यको आफूबाटै गरौँ लेखनी ।
जाउ आफू जता मित्र बन्ने गरी
धर्ति बन्ने थिइन् विश्वकै सुन्दरी ॥५॥



# शिव

✍ *शिव सापकोटा, कक्षा ८* —*तोटक*

मनमा शिवजी तनमा शिवजी
नरको अब घर् घरमा शिवजी ।
उहिँ छन् शिवजी दरबारमहाँ
उहिँ छन् झुपडी घरबारमहाँ ॥१॥

यि सुरासुरले पुजने शिवजी
सबको खुशीमा रहने शिव जी ।
छ अमङ्गल मङ्गल रूप पनि
शतकोटि प्रणाम छ हे शिवजी॥२॥

सब मानिस सृष्टि चराचर यो
क्षणमा शिवको रचना सजिलो ।
कति छन् कति छन् यस मण्डलमा
छ अनादि अनन्त छ सृष्टि यहाँ॥३॥

सबले शिवमा अब भक्ति गरौँ
सब बन्धनबाट विछोड बनौँ ।
सब ज्ञान रहस्य गुरु मुखमा
छ सुधासरि बस्दछ यो मनमा॥४॥

शिव वाक्य रचाउ बढाउ मिठो
सबमा शिव देख रमाउ छिटो ।
यदि दर्शन भो जुनि धन्य भयो
भवबाट छिटैँ चिर छुट्टि भयो ॥५॥







# नेपालप्रति मेरो दृष्टि

–शार्दूलविक्रीडितम्

नीराजन रिमाल, कक्षा ९

हड्डी हो पहरा हिमाल शिर हो खोला नदी रक्त हो
हेला गर्नुहुदैँन यो धरतिको हे मित्र हे शत्रु हो ।
खुट्टा हिंड्छ तराइ अग्रपथमा त्यो ढाड पाहाड हो
सिङ्गो देह रहेछ मानिस सरी यो देश नेपालको ॥१॥

झर्ना झर्झर गर्दछन् वनमहाँ कोकीलको गीतले
छाड्दैछन् मनले सुगन्ध तनले नेपालको प्रीतले ।
छैनन् द्वेष मिलेर बस्छन सबै सद्भावनाको घर
यो नेपाल रहेछ सुन्दर यहाँ अर्को कहाँ के छर ॥२॥

पानी घिच्छ अनेक भट्टीहरूमा सीनो तमाखु पनि
आफ्नै हात बनाई पुत्र सजिलै दाग्बत्ति दिन्छन् कति ।
पाएँ काम सुरम्य ठाउँ जनको सुन्छु कुराको अब
गर्छन् काम सदैव भट्टिहरूमा नेपालको मानव ॥३॥

अत्याचार घमण्डले दिनदिनै बग्दैछ रातो जल
नेपाली जन हो कतातिर लुक्यौ के हेर्दछौ यो पल ।
छैनन् सज्जन ती कतै कपटि छन् अस्तित्व नामेट भो
हे आमा अब देउ पुत्र बलियो नेपाल बिग्री गयो ॥४॥









# सरस्वती

–पञ्चचामर

दिवस आचार्य, कक्षा ७

सरस्वती तिमी सदा भएर ज्ञान रूपकी
बसेर ज्ञान देउ हे कलङ्कितै छ यो मति ।
रमाउँछन् स्वरूपमा अनेकदेवता पनि
सुतेर शेषनागमा रमाउँछन् रमेश नि ॥१॥

यथार्थ रूपछैन हे यता उता जता पनि
तिमी त व्याप्त ब्रह्म हौ यता उता जता पनि ।
अनित्य शब्द ब्रह्मको अवाच्य छौ निराकृति
सदा मनुष्य भज्दछन् रचेर लौकिकाकृति ॥२॥

गरेछ चार वेदले अनेक बीजचिन्तन
अनेक रूपको अनी गरेर रूपवर्णन ।
तथापि एकसार हो छ एक शक्ति निर्गुण
प्रणाम गर्छु शक्तिको र रूपको पुनः पुनः ॥३॥

म काव्य साधना गरी रमाऊ यो समाजमा
र ज्ञानको प्रचारले बनाऊ यो समाजमा ।
म माग्छु शक्ति हे यहाँ प्रकाश ज्ञान रूपिणी
ममा गरेर ज्ञान हे बनाऊ आज सद्गुणी ॥४॥







# नेपाल

– मालिनी

*सुशीलचन्द्र अधिकारी, कक्षा ९*

अटल अचल सेता उत्तरी ती सिरानी
अमर अजर हाम्रा वीरका यी निसानी ।
कति थरि कति भाषा भेष भूषा भएको
जनक, भृकुटी, सीता माथमा नै रहेको ॥१॥

हिमवत गिरि सारा क्षेत्रलाई समेटौँ
अनुरूप भई राष्ट्र–द्रोहिलाई चुमेर ।
विकट–विकटलाई योग्यताले चुमेर
सब मिलिजुली बस्छौँ वीरगाथा उनेर ॥२॥

गठन विगठनैले देश चुर्लुम्म पारी
दिन प्रतिदिन सारा लूटिएका ती नारी ।
अब कति दिन कुर्ने शान्त नेपाल हेर्ने
हृदय अडिक पारी देशको भेष फेर्ने ॥३॥

अब सब मिलि जागौँ देशलाई बचाऔँ
छुत–अछुत हटाई देशलाई उचालौँ ।
अलग अलग ठाउँ स्वच्छताको हिमाल
अमरपुर बनाऔँ देश हाम्रो नेपाल ॥४॥









## वीरहरू

मनोजप्रसाद पराजुली, कक्षा ७
– उपजाति

देखाई आफ्नो बल साथ बुद्धि ।
छाडेर ओर्ले अब राज गद्दि ।
बोकेर हातै भरि शस्त्र–अस्त्र
यो देश जीते नि बनी स्वतन्त्र ॥१॥

त्यो मूर्ति देवालयको छ भित्र
लिएर पस्थे मन त्यो पवित्र ।
त्यागेर सारा मनको कुभाव
लडाइमा लाग्न लिई सुझाव ॥२॥

यो राष्ट्र पाखो अनि खेत बारी
त्यो देख्न पाउँ म सबै चलारी ।
यसै महाँ बस्दछ मान सान
यै हो भनी भन्दछ देह प्राण ॥३॥

काटेर रक्ताम्य बनाई माटो
शत्रूहरू आउँछ जुन बाटो ।
हेरेर बस्छन् उहि शत्रु मार्ग
लिएर भाला अनि रोक्छ मार्ग ॥४॥



## राम

हरि ढुङ्गाना, कक्षा ७
– भुजङ्गप्रयातम्

तिमी सत्य त्रेता युगैमा त जन्म्यौ
त्यसैले त धर्म र पुण्य बचायौ ।
तिमी हौ सबै मानिसैको त दाता
रसीता त हुन् मानिसैको त माता ॥१॥

सिकेँ रामका दिव्य नामौँ हजार
त्यसैले त मैले सिकेको छु ज्ञान ।
तिमी कैकयीका त पुत्रै भएर
त्यसैले मलाई यहाँबाट सार ॥२॥

गरेको थिएँ एक सानो प्रणाम
त्यसैले म भन्दैछु रामै छ नाम ।
भनेको थिएँ एक रामै छ नाम
त्यसैले म पुग्दैछु ठूलै सभामा ॥३॥

तिमीले सिकाए म पुग्नेछु माथि
त्यसैले मलाई त दिन्छौ नि साथी ।
म बन्थेँ तिमी सँगकै साथ साथी
हुनेथ्यौ तिमी राम आए त माथि ॥४॥






# खाते

– मालिनी

*समीर अधिकारी, कक्षा ८*

सडकबिच बसेरै फोर टिप्दैछु मैले
अब रमिकन हाँस्दै बाच्न पाउनेछु कैले ।
शिशु समयमहाँ नै मर्नु भो बा र आमा
म जलरहित माछो झैँ भएँ छैन जामा ॥१॥

अरु सब सखिले ती मातृको प्रेम पाएँ
धुरु धुरु धुरु रुन्छु सम्झना उनको आए ।
पतकर सरि मेरो जिन्दगी भा छ आज
शयन रमण गर्ने ठाउँ नै रोड भा छ ॥२॥

सिर सिर सिर गर्दै बेस्सरी वायु चल्दा
भत भत भत गर्दै तापले देह बल्दा ।
सहन कति नसक्दा देहमा वस्त्र छैन
जल अनि असिना ती रोक्दिने शस्त्र छैन ॥३॥

चर चर चर गर्दै ओठ गाला फुटेका
शरण लिन पुगेथेँ बेस्सरी झन् कुटेका ।
सबजनहरूसँगै देशको काम गर्छु
विपत समय आए आफ्नो यो प्राण छोड्छु ॥४॥







# नेपाल

– मालिनी

✍ *राजेश मिश्र, कक्षा ६*

छ वन अनि पखेरा देशको एक ज्ञान
कुहु कुहु कुहु गर्दै कोयली गर्छ गान ।
सब जन मिलि बस्छन् हुन्न है भेदभाव
यदि छ मुलुक राम्रो गर्छ कोही दवाव ॥१॥

खुस दिलहरू रम्छन् बाँच्दछन् है स्वतन्त्र
मिलजुट सबको यो हुन्छ जीवन्त मन्त्र ।
वन उपवन डुल्दै नाच्दछन् ती मयूर
सुख अनि झगडामा बाँच्दछन् हेर जन्ता ॥२॥

अधर धरर काप्यो घरहरू ढल्न थाले
सब जन मन बिचमा त्रास यो बढ्न थाल्यो ।
कति जनधन वाइयो बग्न गो अश्रुधार
अझ पनि दल बीचमा चल्छ त्यै काटमार ॥३॥

अझ समय छ बाँकी स्वार्थ गर्नु हुँदैन
शुभ अवसरलाई छोड्न कैल्यै हुँदैन ।
सुख अनि सुविधामा देश राम्रो हुनेछ
सब जनहरू मिल्दा राम्रो हुन्थ्यो नि देश ॥४॥









# देवघाटधाम

✍ *विशाल पौडेल, कक्षा ८*

*– मालिनी*

अब समय छ राम्रो देशलाई सपार्ने
असल जन नियाली दुष्टलाई हपार्ने ।
तँ–तँ र म–म भनेमा देशमा पर्छ चोट
मन मगज सपार्दै आऔँ है देवघाट ॥१॥

टिन–टिन–टिन घण्टी बज्दछन् मन्दिरैमा
वरिपरि लहरामा फूल राम्रा वनैमा ।
सबल जन छुटेमा बन्छ यो मूर्खघाट
सरर सरर हावा घुम्छ यो देवघाट ॥२॥

कल–कल–कल गङ्गा बग्दछिन् छेउछेउ
सडक र पुल बन्दै रम्य राम्रो छ ठाउँ ।
अब सब जन टुक्री रोकुँ यो मारकाट
सरर सरर हावा घुम्छ यो देवघाट ॥३॥

सुजन सुमन बस्ने ठाउँ हो आज जान
प्रकृति छ अति राम्रो देशको रम्य स्थान ।
अवयव छ कलाको धर्म संस्कृति भित्र
सरर सरर हावा घुम्छ यो देवघाट ॥४॥







# नेपाल

*– झ्याउरे लय*

*सूदन प्याकुरेल, कक्षा ६*

अनेक भेष अनेक भूषा नेपालमहाँ छ ।
सगरमाथा यो शान्ति भूमि भन त कहाँ छ ॥१॥
जिउँदाको जन्ति मर्दा मलामी यो कुरा सिकाउने ।
संस्कृति छुट्टै भए नि मिल्नु यो कुरा बुझाउने ॥२॥
ढुङ्गा दुईको बीच्मा फलेको तरुल नेपाल ।
द्वन्द्व हटाई अहिंसा पूज्ने नयाँ छ त्यो चाल ॥३॥
प्रदेश तीनमा भाजित छ हैँ यो देश नेपाल ।
नेपाली युवा सब यी देशका हुन् युद्धका ढाल ॥४॥



# शिव

*– अनुष्टुप्*

*देवीप्रसाद रिजाल, कक्षा ७*

भवका मालिक तिम्रो आसनै उच्च छ सदा ।
वर्णन शिवको गर्न शब्द पाइन्न है कदा ॥१॥
लीला विचित्रको तिम्रो जगतै छ कपाउने ।
संहार कालमा सारा पापीलाई सताउने ॥२॥
सबैको प्रेरणा मूल शिव नै हुन् यति बुझ ।
मनुष्यले भोग्नुपर्ने देखाई नै दिए सब ॥३॥
शरीरमा भस्म लाइ घुमिरहे जुनी जुनी ।
सबै खरानी बन्नेछन् भन्ने ज्ञान दिने ऊनी ॥४॥
त्यसैले हे शिव हामी प्रार्थना तिम्रो गर्दछौँ ।
ज्ञानमार्ग समाएर मोक्षको आश गर्दछौँ ॥५॥







# नेपाल आमा भन

—शार्दूलविक्रीडितम्

✍ *राजेश पौडेल, कक्षा ९*

बाढीले पनि पिर्छ यो मुलुकमा भूकम्पले पिर्दछ ।
अत्याचार कसो–कसो गरि यहीँ नेपालमा छिर्दछ ॥
साँच्चै खण्डित पार्न देश अहिले लाग्छन् कयौँ दुर्जन ।
तिम्रो दुःख लुकाउँछौ किन सधैँ नेपाल आमा भन ॥१॥

कुर्सी तान्दछ मस्त नेतृगणले चिन्ता छ के देशको ।
आफ्नै देश विदेश झैँ बनिसक्यो वास्ता छ के भेषको ॥
यस्तो हाल छ हेर आज कसको दुख्दैन होला मन ।
अत्यावश्यक भैसक्यो सपूतको नेपाल जोगाउन ॥२॥

माताको ममता भुलेर जनता आफैँमहाँ मस्त छन्
कोही दुःख र पीरले कति भने झन् रोगले ग्रस्त छन् ।
आमाको गह पुछनलाई अब खै को आउलान् सज्जन
साँच्चै हर्षित भै सबै सपुतले नेपाल आमा भन ॥३॥

हामी जन्मनुको अवश्य भवमा लाखौँथरी अर्थ छन्
मान्छे मूर्ख भएर खै किन अहो सत्कर्म ती भुल्दछन् ।
हामीले यदि गर्दछौँ श्रम भने को रुन्छ साँच्चै जन
तिम्रो त्यो खुसी किन्नलाई गरुँ के नेपाल आमा भन ॥४॥







# वृक्ष

–शार्दूलविक्रीडितम्

सफल पौडेल, कक्षा ९

छाँया छत्र हराभरा धरतिमा स्वच्छन्दको शीतल
पृथ्वीको अनमोल छाती जगमा बस्दैछ रे निर्मल ।
बाटो सुन्दर यो अमूल्य गहना छाया सुसान्तै थिए
सोही भव्य सुधा रसादि मनमा वृक्षादिले छर्दिए ॥१॥

हावा बग्दछ मन्द मन्द गतिमा खोजी सुधा पानको
छर्दै सास सुवास गन्ध रसको रोजी सदा साथको ।
भाखामा पनि कोइली कुहुकुहु गर्दै गरेको थिए
सोही ज्ञान विवेक मानवमहाँ वृक्षादिले भर्दिए ॥२॥

मायाको पनि अर्थ हुन्छ रसको वातावरण सुन्दर
लज्जा साथ बढाउने हरदिनै सौन्दर्यले आखिर ।
स्वार्थी लुट्नु लुटाउने जन यहाँ देख्दैछ कि जानिने
सच्चा अर्थ बुझेर बढ्नु नर हो वृक्षादिले गर्दिए ॥३॥

यस्तो ध्यान गरेर वृक्षहरूले भन्दै छरे मानव
बाँच्ने को छ बचाउने सब यहाँ फाड्ने छ रे दानव ।
साक्षात्कार भएर भन्दछ अहो कस्तो विचित्रै गरे
आफूलाई कटाउने गरिकन वृक्षादिले मर्दिए ॥४॥









# सङ्कटपछिको सङ्कट

– मालिनी

सुरेशनारायण गौतम, कक्षा ९

दश शरद बितायो द्वन्द्वमा पिल्सिएर
कति शहिदहरूको रक्तले सिञ्चिएर ।
जब डुङ्डुङ गोली चल्दथ्यो त्यो निशामा
तब थुरथुर गोडा काप्दथे पाईलामा ॥१॥

तनय विरह आमा सम्झँदा घोटिएर
धुरुरु धुरुरु रुन्छिन् जीर्ण छाती पिटेर ।
नव शिशु टुहुरा छन् देशको कर्णधार
भय विचलित बन्दै खोज्दछन् मातृस्यार ॥२॥

अधिक समय लाग्यो ल्याइयो संविधान
अझ पनि किन उस्तै छैन नौलो बिहान ।
कलह र झगडाले शान्ति सन्तोष छैन
अनपढ जनतामा मन्द मुस्कान छैन ॥३॥

छल सहज बनायो आज सङ्घीयताले
जन–मन बीच ल्यायो द्वन्द्व सङ्घीयताले ।
दल छ कुटिल स्वार्थी खोज्छ जातीय राज्य
मुलुक अब बनायो मांस जस्तै विभाज्य ॥४॥

अझ छ समय बाँकी स्वार्थ त्यागेर लागौँ
शुभ अवसर खोजी एक भै देश हाँके ।
सुख अनि सुविधामा देश पुग्ने छ माथि
सुगठित जनमाला एकताले सिंगारी ॥५॥







## दुःखमा हाँसो

✍ प्रभात रिजाल, कक्षा ६ – उपजाति

खर्चेर आफ्नो बल बुद्धि दुःख
बुझ्दैन यी कार्य त भावि सन्त ।
पुर्खाहरूले जब छोड्छ नासो
चलाउनेछन् अनि अट्टहाँसो ॥१॥

पुर्खाहरूले गरि युद्ध सारा
यो हारको एक बनेछ माला ।
के हो त कर्तव्य भनी बुझेर
जोगाउनै पर्छ सबै पूजेर ॥२॥

पुर्खाहरूले जब राज्य पाए
हे वीर भन्ने उपहार पाए ।
मान्छेहरूको भिडमा गुनासो
चल्ने छ देशै भरि एक हाँसो ॥३॥

शहीदले रक्त बली चढाए
हिंसा हराए अनि शान्ति ल्याए ।
उल्टो छ यो छैन नि सत्य साँचो
आनन्दको चल्दछ अट्ट हाँसो ॥४॥



## ईश्वर

✍ धर्मराज प्याकुरेल, कक्षा ९ – उपजाति

ब्रह्माण्ड सारा भगवान मात्र
यो भुल्भुलैया दुइदिन जात्रा ।
छ आत्मा नित्य जहिले विचार्नु
अवश्य दुर्गूण सबै सपार्नु ॥१॥

कुदीरहेको मन रोकिदैँन
न खाइ धोका मन ठोकिदैँन ।
रहस्य यो हो भव नित्य हैन
छआत्मानित्यअरुकेहिहैन॥२॥

यि पञ्च भूतादि मिली बनेको
हड्डी र छाला रगत अडेको ।
कुनै कहानि म भनेर जान्छु
प्रह्लाद आदर्श म भक्त ठान्छु ॥३॥

रहेछ विज्ञान हिरण्य मात्र
प्रह्लाद भन्छन् हरिको छ साथ ।
म प्रेरणा लिन्छु प्रह्लादबाट
नमामि नारायण लेउ साथ ॥४॥







# काल

– *अनुष्टुप*

✍ *वसन्त रेग्मी, कक्षा ७*

नबिगार्दा पनि काम दोष आउँछ यदा यदा ।
विचारले सबै राम्रो म गर्ने छु सदा सदा ॥१॥
एकैनाश सबै साथी हुदैँनन् कहिल्यै पनि ।
कहिले शत्रु बन्ने हुन् कहिले मित्र नै पनि ॥२॥
खुशीले हाँस्छ तत्–काले तत्काले रुन्छ त्यो त्यहाँ ।
सबै पल एकैनास कसरी हुन्छ नै त्यहाँ ॥३॥
नसोचि आउँछ काल नसोचि लान्छ कालले ।
नचपाई नटोकेरै सलक्कै खान्छ कालले ॥४॥
त्यसैले गर्छु क्यै पक्कै भयो जीवन भित्रमा ।
सबैले गर्दछन् चर्चा यही मेरो चरित्रमा ॥५॥



# आमा

– *झ्याउरे लय*

✍ *अनिश घिमिरे, कक्षा ७*

हे मेरी आमा तिमी नै गुरु तिमी नै देवी हौ ।
तिमी बिना म बाच्न सक्दिन यो कुरा जानी देऊ ॥१॥
बस्ने छु सँगै हे मेरी माता छाडेर जादिंन ।
हत्या र काटमारको बोट गाडेर जादिंन ॥२॥
छोड्दिन मैले भन्न त भने छाडेर गएँ म ।
जान गए म फर्कि आउछु त्यै सुन्दर घरमा ॥३॥
आमाको नाम छातीमा राखी तिमीसधैँ गुन ।
दुष्कर्म छाडे एकदिन नेपाल बन्ने छ रे सुन ॥४॥







✍ *मनीष रेग्मी, कक्षा ८*

# नेपाल

*– मालिनी*

किन मनुजहरू नै गर्दछौ काटमार
बरु जनसब मिल्दै देशलाई सपार ।
अमर र पृथिवी झैं वीरता प्राप्त गर्नु
अनि मनुजहरूमा ज्ञान औं शान्ति छर्नु ॥१॥

अटल सगरमाथा विश्वको लाग्छ छानो
मनुज सब झुकेमा देश बन्नेछ सानो ।
कल–कल–कल बग्ने गण्डकी छन् अशेष
पृथिवीतल भरिको स्वर्ग हो छैन लेश ॥२॥

सबतिर हरियाली सूर्यको तेज पर्दा
धरति धुरुरु रुन्छिन् दाजुभाइ ती मर्दा ।
भय डर नभएको स्वच्छ यो देश हाम्रो
अझ सब जन मिल्दा देश बन्नेछ राम्रो ॥३॥

तब सब मिलि हामी देशको नाम राख्छौं
जब अटल भएरै देशमा हामी जाग्छौं ।
नसुत नसुत हाम्रो राष्ट्रियता हरायो
सकल कपट त्यागौं देशको निम्ति लागौं ॥४॥



Eat to live, but donot live to eat





# मेरो लक्ष्य र देश

– *पञ्चचामर*

*आदित्य आचार्य, कक्षा ६*

म गर्छु ज्ञान ब्रह्मको यही छ लक्ष्य साथमा
नसम्झिएर क्यै कुरा दिनेछु ध्यान पढ्नमा ।
म ज्ञान गर्न चाहँदैछु प्राप्त गर्न ब्रह्मको
त्यहीँ म जन्मिएँ जहाँ भएछ जन्म बुद्धको ॥१॥

म छर्छु दिव्य ज्योतिमा प्रशस्त पुष्प–वासना
कुनै पनि मनुष्यले नछोड्नु प्राण आशमा ।
गरेर उन्नति सधैँ म बढ्दछु निरन्तर
सुकेर झर्छ फूल पो म बाँच्छु झन् निरन्तर ॥२॥

सुरम्य लाग्छ यो धरा विचित्र दिव्य सुन्दर
अझैँ हुनेछ स्वच्छ यो गरेर कर्म सुन्दर ।
म बन्छु भक्त देशको गरेर देश वन्दना
मरे पनि म मृत्तिका भएर बस्छु सर्वदा ॥३॥

अनेक दीव्य साधना गरेर पुण्य पाइने
स्वदेश जत्तिको कुनै धरा कतै नपाइने ।
अनेक साधु सन्तको र बुद्धको तपः स्थल
सपूतले बनाउनैछ देश स्वच्छ निश्छल ॥४॥



लोभः पापस्य कारणम्





# देवघाट

इन्दिरा

✍ *सुवास अर्याल, कक्षा ६*

सलल बग्दछिन् गण्डकी यहाँ
सरल बन्छ यो जिन्दगी यहाँ ।
ऋषिमहर्षिले ध्यान गर्दछन्
सुजनले यहीँ ज्ञान छर्दछन् ॥१॥

प्रकृतिले सधैँ रङ्ग भर्दछिन्
अनि तरङ्गमा दङ्ग पर्दछिन् ।
बटुक पढ्दछन् वेदका ऋचा
घनन घन्किनेछन् दशै दिशा ॥२॥

उपनिषद् तथा मन्त्र बोल्दछन्
असल या झुटो सत्य खोल्दछन् ।
गुरुहरू सधैँ पढ्न लाउँछन्
र पशुपन्छीले गीत गाउँछन् ॥३॥

छ शिवको यहाँ एक मन्दिर
नजिकमा थियो एक आश्रम ।
छ गुरुकुल हीँ पढ्दछन् सबै
म पनि छात्र हूँ पढ्छु झन् सधैँ ॥४॥

भगवद्भक्त छन् भेट्न आउँछन्
र सतसङ्गमा प्रेम लाउँछन् ।
यति सबै मिली हाँटबाँटमा
सुख दिलाउँछन् देवघाटमा ॥५॥









✍ *अभिषेक रेग्मी, कक्षा ६*

# कविता

*– झ्यारे लय*

साथीले साध्यो आँखामा तिम्रो के राखिदिऊँ म ।
अर्कोले बोल्यो छैन त्यो ज्योति लौ राखिदेऊ न ॥१॥
हरेक यात्रा एक पाइलाबाटै आरम्भ हुन्छ रे ।
हरेक यात्रा एक पाइलामै समाप्त हुन्छ रे ॥२॥
हामीले सोच्यौँ हाम्रो सौन्दर्यभित्र त्यो फूल छ ।
फूलले सोच्ला उसको सौन्दर्यभित्र वास्ना छ ॥३॥
म पढ्न आएँ विद्यालयमा पढ्दछु प्रेमले ।
डिग्री पास गर्ने उद्देश्य ठूलो बोकेको छु मैले ॥४॥



✍ *चूडामणि रेग्मी, कक्षा ६*

# देवघाट

*-अनुष्टुप*

गुरू छात्रहरू सारा रमाउँदै अटाउने ।
अज्ञानरूप जालो यो सबै मिली अटाउने ॥१॥
आश्रम सबको साझा भए भाव यही सदा ।
सञ्चालक सही हुन्छन् पछि हट्दैन है कदा ॥२॥
विद्यार्थीहरूले नित्य वेदाध्ययन गर्दछन् ।
मन्दिरमा बिहानीमा जलधारा नि गर्दछन् ॥३॥
प्रभुको घरमा हामी गर्दछौँ नित्य आरती ।
सबैको भावना स्वच्छ पर्ने तिमी सरस्वती ॥४॥
विष्णुको पावनक्षेत्र शालीग्राम बगाउने ।
यही क्षेत्रमहाँ अश्रम धेरै धेरै अटाउने ॥५॥


A greater talker is a great liar




# टुहुरो

– मालिनी

✍ प्रज्वल खनाल, कक्षा १०

जब नयन उघारेँ नील आकाश देखेँ
चहलमहल साथै खिन्नतामा हराएँ ।
अलि नजर उठाई खोज्छु माता पिताजी
परिचित जन छैनन् देख्छु मात्रै पराई ॥१॥

झम झम जल पर्दा पाल छैनन् मसँग
अथक रमण गर्थेँ ताल छैनन् मसँग ।
उदर अपुग साथैँ आङमा वस्त्र छैनन्
लुखुर लुखुर हिड्दा गिट्टिमा पाउ दुख्छन् ॥२॥

रवि सरह उदाई देशमा ज्योति बाल्थेँ
दशरथ मनु जस्तै आजको देश हाक्थेँ ।
सब रचित भुलैया छालले नै बगायो
दिनभर भिख माग्ने पुर्पुरोमा जुरायो ॥३॥

भत भत भत छाती पोल्छ आमा नदेख्दा
अविरल झन बग्छन् अश्रुका धेर ढिक्का ।
जननि सित छुटाई के गरिस् दैव तैले
सुख जति सब लुट्दै डिच्च हाँस्दैछ ऐले ॥४॥









# नेपाल

–शार्दूलविक्रीडितम्

विवेकराज भट्टराई, कक्षा १०

मेरो लेक मलाई चिन्न न सकी हाँस्दै छ रे मार्गमा
भेटिनन् अनि सुन्छु मानव कुनै नेपालको स्वर्गमा ।
छोराको शिरमा पियार करको पाइन्न सत्स्पर्श त्यो
यो नेपाल नपाइ रून्छ गहना सत्कल्पना हर्षको ॥१॥

देख्थें शैशवकालमा वनमहाँ पङ्क्ति कैयौं फूलका ।
बन्थे पीयुष तुल्यशीतजल ती धर्ती फुटी मूलका ।
झिक्थें शब्द मिठा समीर गीतमा सल्ला र धूपीहरू
खोज्थें आपसमा किराहरू कतै चीवे र रूपीहरू ॥२॥

चर्थे घाँस चउरमा रस लिदैं बाख्रा र गाईहरू
चौतारातिर बाघचाल चलदै दाजु र भाईहरू ।
भिज्दैथे श्रममा अगाध पसिना काढी भरीयाहरू
स्यौला घाँस र दाउरा लिन भनौं जान्थे बुढीयाहरू ॥३॥

सब्मा होस् मनको सभाव मनमै सत्कार्य सब्ले गरुन्
हाम्रो देशमहाँ सधैं हरितता ती वृक्षले नै छरून् ।
खै के हो नर राष्ट्र भक्त त्यसले वात्सल्यता पाउँछ
आऊ फर्कि विदेशबाट सबले नेपालमा विश्व छ ॥४॥



जीवनमा प्रसिद्ध होइन दुर्लभ बन्न सिक





# गजल

*समुद्र रिमाल, कक्षा ९*

यौटा शिलशिला हो जिन्दगी चलिरहेछ ।
जस्तै प्यास बुझाउँदै नदी चलिरहेछ ॥
चन्द्रमा उदाए झैँ जुन दिन तिमी उदायौ ।
तिम्रै खोजीमा हिमाल पनि चलिरहेछ ॥
यौटै बाँकी रह्यो अब निगरानी राख्न ।
भित्तामा बसी जुन घडी चलिरहेछ ॥
बसी बसी कसरी पौरखी बन्छौ तिमी ।
हेर बस्दै नबसी पौरखी चलिरहेछ ॥
तिमीले छाडेर गयौँ त के नै भयो र ?
अझै यो समुद्रमा चाँदनी चलिरहेछ ॥



# गजल

*प्रवीण काफ्ले, कक्षा ८*

खान्न-खान्न भन्नेलाई किन गर्छौ कर ।
सप्रिदैनन् सबै यसै ज्ञानको ज्योति छर ॥
बाटो यता छ भनी खाडल तिर लाग्ने ।
विश्वासघाती साथीको नै किन पर्छौ भर ॥
सधैँ-सधैँ रुखो बोली कति गर्नु गाली ।
बन्न सिक बटुवालाई छायाँ दिने वर ॥
गल्ती गरी घरी-घरी डराउनु भन्दा ।
सन्मार्गमा लाग सधैँ केही हुन्न डर ॥







# गजल

अनन्त सुवेदी, कक्षा ७

साचेको थिएँ तिमीलाई मायाको खानी ।
आज बल्ल थाहा भयो तिम्रो बानी ॥
मरुभूमिको तातो बालुवामा तिमीसँग हुँदा ।
अलिकति दया नमानि दिए नौ है पानी ॥
दोयौ होला तिमीले मलाई कति दुःख ।
तर मैले माफ गरे निर्दोष ठानी ॥
सत्यता के हो मलाई मात्र थाहा थियो ।
बन्न खोज्यौ तिमी सबभन्दा ज्ञानी ॥
म तिमीलाई आफ्नै भन्ने सोच्थे ।
तर तिमीलाई माया दियौ छानी–छानी ॥



# गजल

रोशन रिजाल, कक्षा ८

आफ्नै कलामा जिन्दगी जिउने भर हुन्छ ।
कोपिलालाई पनि त फूल्ने रहर हुन्छ ॥
हामीले सोचे झैँ जिन्दगी हुदैँ हुदैँन ।
अप्ठ्यारो कहिले सजिलो सफर हुन्छ ॥
यस्तो काम देखाउनु छ दुनियालाई ।
जुन काम गर्दा मेरो नाम अमर हुन्छ ॥
बुज्रुकहरूले उपदेश दिने गर्थे पहिले ।
मन्द विष हो प्रेम विस्तारै असर हुन्छ ॥
यत्ति धेरै कमजोर न सम्झिए हुने हो ।
यो “रोशन”लाई नि दुश्मनको खबर हुन्छ ॥







# गजल

✍ *समीर रिजाल, कक्षा ७*

मलाई दाऊमा राखी सबै बेची सकेका छन् ।
मलाइ भाऊमा राखी नराम्रा काम गरेका छन् ॥
म नेपाली भनी देशका सबै इज्जत् लुटेका छन् ।
यि नेपालीहरू आफू त आफैँ मा टुटेका छन् ॥
सबैले देशको रक्षा गरी मर्नेछ भन्दै थे ।
तथापि यी सबै मान्छे त आफैँमा फुटेका छन् ॥
कसैको द्वन्द्वमा आँखा गडाएरै बसेका ती ।
यि नेपालीहरू टुट्दा सबै मज्जा लुटेका छन् ॥



# गजल

✍ *दीपेश बाँस्कोटा, कक्षा ८*

आफ्नै अधिकार अनि हक हुनुपर्छ ।
आनन्द पाउन जीवनमा बालक हुनुपर्छ ॥
हतियार हैन शिक्षा दिने गुरुहरूको ।
अगि कालोपाटी हातमा चक हुनुपर्छ ॥
दु:खहरू जीवनमा आइरहँदा पनि ।
ओठमा हाँसो अनि अनुहारमा चमक हुनुपर्छ ॥
कुनै रूपमा पनि भगवान् आउन सक्छन् घरमा ।
दैलोमा सधैँ बलिरहेको दीपक हुनुपर्छ ॥
तिमी मर्दा संसारले डाको छाडी रोऊन् ।
अरुको नजरमा आफू त्यति लायक हुनुपर्छ ॥









# गजल

✍ *ऋषभ अर्याल, कक्षा ९*

विद्यार्थी हुँ पढ्नलाई मन देऊ शिव ।
साथीभाइ गुरुवर्ग सज्जन देऊ शिव ॥
विद्या भन्दा ठूलो वस्त, केही छैन रे ।
सङ्घर्षले पढ्न सक्ने तन देऊ शिव ॥
विद्याले नै मानिसलाई सभ्य बनाउँछ ।
सदा मलाई विद्यारूपी धन देऊ शिव ॥
विद्या भए मानिसले चन्द्र छुन सक्छ ।
पढ्न कठीन होला लगन देऊ शिव ॥
विद्यालय शान्ति क्षेत्र हुनुपर्छ अब ।
शान्तिको वर्षा हुने गगन देऊ शिव ॥



# गजल

✍ *सन्देश कोइराला, कक्षा ८*

फर्केन छोरो आशु झारेर रोइन् रे ।
मनको पिर मनमा गाँठो पारेर रोइनन् ॥
परदेशी जीवन अर्काको देश भने झैँ नहुने ।
मनका रहर मनमा कठै बारेर रोइन रे ॥
भत्केको घर चुहिने छानो हेरेर बाटोमा ।
फर्कन्छ भन्ने छोराको आश पारेर रोइन रे ॥
विधिले यस्तै लेखेछ कठै यो मेरो भाग्यमा ।
पिर र चिन्ता गरेर आफैँ हारेर रोइन रे ॥
बाँचेछु भने फर्कन्छु साँच्चै गोधुली साँझमा ।
फर्केन छोरो भनेर आशु झारेर रोइन रे ॥






# गजल

✍ *सुरेश रिमाल, कक्षा ६*

दुखेसो छ मेरो चिनारी हरायो ।
थियो पुग्नु टाढा सवारी हरायो ॥
सबैले धनी बन्न यो देश छोड्छन् ।
यताको भने खेतबारी हरायो ॥
शिकारि बन्छु भन्दै डराईरहेथेँ ।
विनाकाम दौडेँ शिकारी हरायो ॥
कहानी सुनाए सबै मन् भरीका ।
हलुँगो भएँ दुःखभारी हरायो ॥



# गजल

✍ *मनीष रेग्मी, कक्षा ८*

यहाँ देशमा रेटिएको छ घाँटी ।
बनेछन् सबै देश विश्वास घाती ॥
भयो आज हत्या र शान्ति हरायो ।
त्यसैले थुके देश नेपाल माथि ॥
यहाँ देशको निम्ति मर्दैछु मैले ।
नसक्दा नसक्दै फुटाएर छाती ॥
लुके ती सबै देशका वीर सारा ।
कमीलो लेकुच्दा नि मर्दैछ हात्ती ॥







# गजल

✍ *गोपाल भण्डारी, कक्षा ६*

गए पाइला यी झमेलाहरूमा ।
छ पीडा भिजेका परेलाहरूमा ॥
जगत्का स्वार्थको मार्ग चुन्दै हिंडेनी ।
म हाँस्दै बसेको छु हेलाहरूमा ॥
गुजारा चलाइन्छ ढुङ्गा कुटेर ।
बुझेको छु जीवन् छ ठेलाहरूमा ॥
गधा केह बोल्दैन हेरीरहन्छ ।
नबाध्नुस् भनीयो तबेलाहरूमा ॥
सिकाएर ताने हिंडेको छु ऐले ॥
कसोरी लडूँ युद्धरेखाहरूमा ॥



# गजल

✍ *नीराजन रिमाल, कक्षा ९*

एक्लै थिएँ आज अर्को मन आयो ।
मेरो घरमा पनि परिवर्तन आयो ॥
लडि बुडि गर्दै पिडीमा खेल्छन् बच्चा ।
मेरो आँखामा भने बालापन आयो ॥
कति वसन्त फेरीए कति ऋतु फेरिए ।
बल्ल सुनौलो बिहानी झै यौवन आयो ॥
सम्मान गरौ या अपामान गरौँ अब ।
पाहुना भएर घरमा दुश्मन आयो ॥
रसाएका आमाका आँखा बल्ल ओभाए ।
जुन दिन घर फर्केर नीराजन आयो ॥







# गजल

✍ *हरिश्चन्द्र मिश्र, कक्षा ६*

नेपाली हामी शत्रुका सामु झुक्दैनौँ कहिल्यै ।
इमान राख्न पौरख गर्न चुक्दैनौँ कहिल्यै ॥
अग्रजको देन भुल्दैनौँ त्यसै सुबाटो हिंड्नेछौँ ।
लाचार बनी बिगुल व्यर्थै फुक्दैनौँ कहिल्यै ॥
पसिना रगत धर्तीमा पोख्छौँ बिरुवा उमार्छौँ ।
अरूको घर आँगन दैँलो ढुक्दैनौँ कहिल्यै ॥
देशका निम्ति बुद्धि र विवेक प्रयोग गर्दछौँ ।
सभ्यता चुम्न असभ्य बनी हिंड्दैनौँ कहिल्यै ॥



✍ *शिवराम दुवाडी, कक्षा ८*

# गजल

कि राम हुनुपर्छ कि शिवराम हुनुपर्छ ।
गरिबको पनि एक-एक काम हुनुपर्छ ॥
ऊ अनुहार देखाउन पनि डराउँछ किन हो ?
पक्कै पनि उसको समाजमा बदनाम हुनुपर्छ ॥
कहीँ टर्च र मैनको प्रतिस्पर्धा परे पनि ।
त्यहाँ बढी प्रकाश दिने घाम हुनुपर्छ ॥
तिमीलाई घर बनाउने जति ढुङ्गा चाहिए पनि ।
पहिले तिम्रो खल्ती भरी दाम हुनुपर्छ ॥
प्रेमका कुराहरू मनमै खेलाई रहनुभन्दा ।
चिठी आदान प्रदान गर्ने खाम हुनुपर्छ ॥









# गजल

मिलन मरासिनी, कक्षा ७

प्रजातन्त्र सङ्ग्राममा फाल हाली ।
बगेको थियो देशमा रक्त नाली ॥
प्रजातन्त्र आको भयो वर्ष साठी ।
भयो मात्र भण्डारको द्रव्य खाली ॥
युवा देश छोडेर पर्देश भागे ।
झुकी पाउ मोल्दै छ रे गोरखाली ॥
सबै भाव गाम्भीर्य छोडेर खाली ।
भयो काव्य हेतू यहाँ एक ताली ॥



विजय रिजाल, कक्षा ९

# गजल

बलेन देशमा चुलो विलीन स्वाभिमान भो ।
बसेन बुद्धको धुलो विलीन स्वाभिमान भो ॥
हेरेर घाँटि निल्नुथ्यो कहाँ भयो र चेतना ।
रोकिन्छ औषधी मुलो विलीन स्वाभिमान भो ॥
विदेशी चक्रमा परी अहं गुमेछ देशको ।
बढ्यो उकालोमा कुलो विलीन स्वाभिमान भो ॥
जो अग्रगामी छन् यहाँ पचाई मौन बस्दछन् ।
परेछ नेत्रमा फुलो विलीन स्वाभिमान भो ॥
म तार्छु दुःखको खोलो भनेर माझी फेरिए ।
परेछ नाउमा दुलो विलीन स्वाभिमान भो ॥







# गजल

*अभिमन्यु ढुङ्गाना, कक्षा ९*

मुमाझैँ कतै मैन रोईरहेछ ।
र हाँसो कतै छैन रोईरहेछ ॥

म कर्तव्यको मार्गमा हिँड्नुपर्थ्यो ।
बिराएँ कतै ऐन राईरहेछ ॥

कठै यादमा तड्पियो जिन्दगी यो ।
हँसाउन सक्दैन रोईरहेछ ॥

उ जस्तै नयाँ ठाउँ होला कि भन्दै ।
भई स्वर्ग बेचैन रोईरहेछ ॥



# गजल

*प्रकाश उपाध्याय, कक्षा ९*

सडेर भाँचियो हलो युवा सबै विदेशमा ।
ढलेछ कम्पले तलो युवा सबै विदेशमा ॥

जहाँ असार आउँछन् अवश्य धान झुल्दछन् ।
यहाँ पोतिन्न है खलो युवा सबै विदेशमा ॥

अमूल्य रक्तविन्दुले सिँगारियो मरुस्थल ।
यो बाल वृद्धको थलो युवा सबै विदेशमा ॥

विदेशी कामदार छन् ठूलो ठडिन्छ पिल्लर ।
काटिन्न सालको बलो युवा सबै विदेशमा ॥

प्रबुद्ध व्यक्ति भाग्दछन् लिएर “ग्रीनकार्ड” त्यो ।
हुँदैछ गाउँ पातलो युवा सबै विदेशमा ॥









# गजल

सूर्यमणि जमरकट्टेल, कक्षा १०

छ नेपालमा देख्छु साहित्य खानी ।
सुरक्षा दिनुस् है ! मलाई भवानी ॥
चरी बोल्न सक्छन् गरे प्रेम साचो ।
सबै क्रूर देख्छु म यो राजधानी ॥
लिए दृढ इच्छा गगन चुम्न सक्छौ ।
नगर्नू कहिल्यै कतै आनकानी ॥
किनाराहरूले नदीलाई भन्छन् ।
तिमीमै बस्यो प्रेम नजानी नजानी ॥
स्वयं लेखिएको छ यो प्रेम गाथा ।
म चाहिं छु राजा तिमी छौ नि रानी ॥



# गजल

पुष्पराज पाण्डे, कक्षा १०

कहाँ सक्छु पीडा नभै रूनलाई ।
गरे हुन्छ कोसिस शिखर छुनलाई ॥
विधाता नि कस्तो दियो धेर पीडा ।
गगनमाथि हेर्दै भने जूनलाई ॥
म बिग्रीसकेको थिए आइदियौ ।
सिकाइदियौ जिन्दगी ज्यूनलाई ॥
बने चोर डाँकू फटाहा सबैको ।
कहाँ छल्न सक्छु र कानुनलाई ॥
उडी कल्पनामा नदी तर्न सक्छु ।
कहाँ सक्छु आफै नदी हुनलाई ॥







# गजल

✍ *कुबेर भट्ट, कक्षा १०*

त्यही चन्द्र नै हो गगनको सहारा ।
तिमी नै थियौ एक मनको सहारा ॥
दिएका सयौँ दुःख पोख्ने रहर्ले ।
लियो अश्रुले यो नयनको सहारा ॥
यहाँ प्रेमले पग्लियो हेर ढुङ्गा ।
त्यसैले म चाहन्न धनको सहारा ॥
तिमी फूल हौ वासना छर्नलाई ।
लिए है मजस्तै पवनको सहारा ॥
मुमाको सरी प्रेम आउ म दिन्छु ।
तिमी देउ मात्रै वचनको सहारा ॥



# गजल

✍ *मनीष विडारी, कक्षा १०*

गए ती वीर यो नेपालमा माया मिसाएर ।
र यो नेपालकै लागि बिलाए प्राण त्यागेर ॥
कसैका देह फाटिन्छन् कसैका प्रेम टाडिन्छन् ।
त्यसैले झन् दिए माया चुडे मूटु सिलाएर ॥
कसैलाई बनाएर कसैलाई सिकाएर ।
दिएरै प्राणको दान गयौ सम्मान पाएर ॥
हरायो वीरको गाथा हरायो वीरको कर्म ।
त्यसैले वीरको लागि गयौ गाथा सुनाएर ॥
कतै हारेन नेपाली जित्यो नेपालले युद्ध ।
गयौ नेपालको सेनाहरूलाई जिताएर ॥







# गजल

*प्रकाश न्यौपाने, कक्षा ७*

कतै घाम देखेँ कतै चाहिँ पानी ।
यही घामपानी बन्यो जिन्दगानी ॥
न कोही छ राजा न कोही छ रानी ।
अनौठो छ यो प्रेमको राजधानी ॥
बुझेनन् कुनै कान सुन्नेहरूले ।
कसैसँग मिल्दैन मेरो कहानी ॥
लियो प्राण हावाहुरीले स्वयंमा ।
उडाई दियो एकमुट्ठी खरानी ॥
दियो बाबुआमा दियो देश यस्तो ।
बनाई दियो दैवले भाग्यमानी ॥



# गजल

*सुदीप शर्मा, कक्षा ९*

यो नेपालको पुत्र शूरो रहेछ ।
भन्यो वैरीलाई कुखुरो रहेछ ॥
कला ज्ञान विज्ञानको सभ्यताको ।
यही पूर्व माटो चुचूरो रहेछ ॥
लिँदा काखमा त्यो हदै मुस्कुरायो ।
सुनेको गुनासो टुहूरो रहेछ ॥
गर्यो प्रेम अर्को बचेको मदनले ।
पढेको कहानी मधूरो रहेछ ॥
घुँडा चस्किँदा बल्ल आभास हुन्छ ।
गुमेको जवानी मधूरो रहेछ ॥







# गजल

✍ *शिवराज न्यौपाने, कक्षा ६*

सँधै नाचिरहने पिपलको बोट चिनाउन चाहन्छु ।
साथीहरूलाई मेरो मनको चोट चिनाउन चाहन्छु ॥
लुटेर ठगेर चोरेर हात पारेको होइन ।
पसिना बगाएर कमाएको नोट चिनाउन चाहन्छु ॥
देशको रक्षा गर्छु भनी झुटो कुरा गर्ने ।
नेताहरूलाई हामीले दिएको भोट चिनाउन चाहन्छु ॥
नेपाल आमालाई आँच आउन दिन्न भनी ।
यहि गजलबाट आफ्ने अठोट चिनाउन चाहन्छु ॥
हजारौँको हुलमा एक दिन उभिएर आफ्नो ।
सुन्दर शान्त स्वर्ग जस्तो कालिकोट चिनाउन चाहन्छु ॥



# गजल

✍ *शिवहरि नेपाल कक्षा ९*

विना हारको जीत फेला पार्न सक्छौ ।
सधैँ गरोस् हीत फेला पार्न सक्छौ ?
तनाब मोह सारा नष्ट पारिदिने ।
गीता जस्तो गीत फेला पार्न सक्छौ ?
जहाँ मान्छेलाई मान्छे बनाइयोस् ।
त्यस्तो कुनै रीत फेला पार्न सक्छौ ?
विश्वासले बनाइएको घर ध्वस्त पार्ने ।
शंका जस्तो पतित फेला पार्न सक्छौ ?
आँखाबाट पसी हृदयमा बस्ने ।
शिवहरि जस्तो मीत फेला पार्न सक्छौ ?






# गजल

मनोजप्रसाद पराजुली, कक्षा ७

फूल जस्तो प्रिय भै बाँच्न सिक तिमी अब ।
मौरी भई एकतामा नाच्न सिक तिमी अब ॥
कर्तव्य हीन भई केका लागि बाँच्नु छ र ?
अर्ति हो या गल्ति जाँच्न सिक तिमी अब ॥
परम तृप्ति प्राप्त गर्न मोक्ष पाउने इच्छा राख ।
अहंकार र "मम"लाई भाँच्न सिक तिमी अब ॥
"सोऽहं" भन्ने महामन्त्र सदा सदा जप्ने गर ।
"सोऽहं"लाई नै अँगालेर बाँच्न सिक तिमी अब ॥
आफूलाई जति प्रेम अरूलाई पनि गर्न सिक ।
"वसुधैवकुटुम्बकम्"को भावना साँच्न सिक तिमी अब ॥



# गजल

पुरुषोत्तम उपाध्याय, कक्षा ६

भयो आज नेपाल जोगिन्न जस्तो ।
कुनै भक्ति बलभद्र जन्मिन्न जस्तो ॥
कुनै यात्रु टाढा गएको छ आज ।
पुनः मित्र सम्झेर फर्किन्न जस्तो ॥
लुके वीर–वीराङ्गना खै कहाँ हो ।
कि नेपालमा वीर पाइन्न जस्तो ॥
तिमी नै त हौ देशको कर्णधारा ।
तिमी गर्दछौ अन्य वा भिन्न जस्तो ॥
न मुस्काउने चेहरा छन् सबैका ।
खुसीमा पनि देखिने खिन्न जस्तो ॥







# गजल

✍ *रोहण सुवेदी, कक्षा ६*

यहाँ पढ्न आएँ सधैँ पढ्न पाऊँ ।
सधैँ ध्यान पढ्ने कुरामै लगाउँ ॥
ठुलो हैन मान्छे असल बन्नुपर्छ ।
गरी ज्ञान अज्ञानलाई हटाऊँ ॥
म सानो छु ऐले म पढ्ने छु धेरै ।
पछि विश्वका सारा दुःख भगाऊँ ॥
अशिक्षा छ धेरै प्रदूषण छ धेरै ।
म ज्ञानी बनी देशलाई चिनाऊँ ॥
म उद्यानको बन्न चाहन्छु माली ।
म यी फूललाई फलाऊँ फुलाऊँ ॥



# गजल

✍ *युवराज रिमाल, कक्षा ६*

पीडा र पीरमा यो जीवन चलिरहेछ ।
हो छैन मृत्यु निश्चित बेला बितिरहेछ ॥
आयो दशैँ सबैले भन्छन् सधैँ रमाई ।
पिङ खेल्नलाई उसले पालो कुरिरहेछ ॥
बुझ्दैछु बल्ल मैले के रैछ काल भन्ने ।
रोएर आज धेरै पीडा बढिरहेछ ॥
तिम्रो सहायतामा उड्नेछ मन त्यसैले ।
डोरीसँगै सधैँ यो चङ्गा उडिरहेछ ॥
भगवान्को अगाडि पर्दा झुकेर आफू ।
उसले मलाई पढ्ने आज्ञा दिइरहेछ ॥







## गजल

✍ *रोहित सुवेदी, कक्षा ६*

सधैँ मौनतामा रुमल्लिन्छ मान्छे ।
निकै दुःख पाई छचल्किन्छ मान्छे ॥
समाधान खोजेर यो जिन्दगीको ।
समस्याहरू भित्र अल्झिन्छ मान्छे ॥
घमण्डी हुँदा फेरी आधार भुल्दा ।
शिखर बाट भुइँमा बजारिन्छ मान्छे ॥
स्वयंले भने दुःख चाहन्न केही ।
अरूलाई पो दुःख नै दिन्छ मान्छे ॥
खुसीले त बिर्सिन्छ सम्झिन्न केही ।
हमेशा यहाँ दुःखले चिन्छ मान्छे ॥



## गजल

✍ *पूजन पौडेल, कक्षा ७*

जहाँ शास्त्रको लक्ष्यमा कान हुन्छ ।
त्यहीँ शास्त्रको तत्त्वको ज्ञान हुन्छ ॥
म माता पिताको खुसी खोजिदिन्छु ।
त्यसैले सधैँ आत्मसम्मान हुन्छ ॥
समस्या बनी आउने शत्रुलाई ।
सधैँ मुस्कुराए समाधान हुन्छ ॥
कुनै राग भेटिन्न डिस्कोहरूमा ।
बरु सोरठीमा मिठो गान हुन्छ ॥
डराएर भाग्छन् सबै बुद्धिमानी ।
उनै रज्जुमा सर्पको भान हुन्छ ॥







# गजल

✍ *विवेक अर्याल, कक्षा ७*

दिनेले हरेक पल्ट मौका दिँदैन ।
गुमेदेखि मौका पुनः पइँदैन ॥
परे चोट हाँस्ने कला जिन्दगी हो ।
बुझेँ हाँस्नलाई खुसी चाहिँदैन ॥
बगेँ भावको वेगमा पग्लिएर ।
म मझ्धारमा छु नदी रोकिँदैन ॥
तिमी आज मुस्कानमा दुःख छोप्छौ ।
फिलिङ्गो खरानीमुनि छोपिँदैन ॥
दुवै हार वा जीतमा देख्छु उस्तौ ।
विवेकी कुनै दुःखमा आत्तिँदैन ॥



# गजल

✍ *कुशल नेपाल, कक्षा ९*

उ विश्वासले भन्न सक्दै द्यौता ।
बरू पुज्न थाल्दैछ राजा रजौटा ॥
यसै रीतमा देश चल्दै गएमा ।
यहीँ जङ्ग जन्मन्छ यौटा न यौटा ॥
छ जो अल्छि तिघ्रेहरू काम ठग्छन्
तिनैका जिब्रो खोज्छ आलुपरौठा ॥
म स्वच्छन्द छु है कोही गाँसिएमा ।
म मान्नेछु है दैव हाल्दैछ सौता ॥
कहानी छ छोटा र बाँदर छ पुर्खा ।
मलाई तिनैले भने रे पछौटा ॥







# गजल

*सुजन थपलिया, कक्षा १०*

म तिम्रो प्रेमको सागर्महाँ साँच्चै डुबेको छु ।
त्यसैले आफूलाई नै स्वयं आफै भुलेको छु ॥
सबै नाताहरू तोडी म टाढा जान्छु पो भन्छयौ ।
बनी रातो रगत् त्यो देहमा हर्दम बगेको छु ॥
तिमीलाई कतै काट्दा मलाई बेस्सरी दुख्छ ।
तिमी आँखा भए तिम्रो म नै नानी बनेको छु ॥
चरी लैजा खबर् मेरो कसैको द्वारमा छिट्टै ।
दिएको चोटले गर्दा यहाँ हर्पल् मरेको छु ॥
मरे मर्ने तिमीसँगै बचे बाँच्ने तिमीसँगै ।
लिई आशा म दोबाटोमहाँ पर्खीबसेको छु ॥



# गजल

*सुजन पौडेल, कक्षा ७*

प्राणीहरू सबै उस्तै हुन् जस्तो लाग्छ ।
माया गर्ने जति सबै जुन जस्तो लाग्छ ॥
शत्रु पनि आफ्नो मित्र हुन थालेपछि ।
शत्रुले गरेको शत्रुता पनि गुन जस्तो लाग्छ ॥
गाह्रो काम लगाएर गल्ति गर्दा गाली गर्ने ।
यस्तो बानी मलाई चर्को नुन जस्तो लाग्छ ॥
साथी भनेर मेरो लागि जस्तो वस्तु दिए पनि ।
दिएका ती वस्तु सबै सुन जस्तो लाग्छ ॥







# गजल

✍ *सारांश ढकाल, कक्षा ७*

म बिग्रेको पक्कै पनि वेदान्त छोडेर होला ।
दु:खले भरिएको संसारसँग माया जोडेर होला ॥
कहिल्यै अस्ताउँदैन मेरो संसारमा सूर्य ।
सद्ज्ञानरूपी फूलबारी सधैँ गोडेर होला ॥
यो संसार अलग छ, मेरो संसारमा झनै अलग ।
ब्रह्मज्ञानी बन्दै छु म बाटो मोडेर होला ॥
ब्रह्माज्ञानी अनि सुनौलो बिहानी एउटै जस्तो लाग्छ ।
संसार डुबाउने रातको अन्धकार तोडेर होला ॥



# गजल

✍ *चन्द्रप्रसाद खतिवडा, कक्षा ८*

तिमिलाई खुसी राख्न गरे कति काम ।
बिर्सेपछि के लाग्थ्यो र खाली आयो खाम ॥
काम गरे रात—दिन नभनेर सधैँ ।
महिनादिन पुगिसक्यो केही छैन दाम ॥
सधैँ बन्नु पर्ने दास सम्पन्नको घरमा ।
विकल्प नै केही थियो र छैन खाने माम ॥
एकै पटक सम्झेर मात्र पुग्छ मलाई ।
म हूँ तिम्रो सच्चा मित्र जप्छु तिम्रै नाम ॥
सँगै खल्ने, सँगै हाँस्ने, सँगै बाच्ने कसम खाई ।
छुट्टिएर आज किन भयौँ तारा घाम ॥







# गजल

*प्रज्वल लामिछाने, कक्षा ८*

संसार चल्ने हो चल्छ अघि बढ ।
आगो बल्ने हो बल्छ अघि बढ ॥
शरीर त एउटा मूढो जस्तो ।
एक दिन ढल्ने हो ढल्छ अघि बढ ॥
बिउ रोप पानी हाल धैर्य गर ।
फल फल्ने हो फल्छ अघि बढ ॥
पूरानो लुगा फेरे झैँ आत्माले ।
तन बदल्दो हो बदल्छ अघि बढ ॥
जीवनमा कालको गोली लागेपछि ।
चितामा जल्ने हो जल्छ अघि बढ ॥



# गजल

*रोशन नेपाल, कक्षा ७*

यो संसारमा फरक मुटु हुने मानव कुन्छ ।
त्यसकारण सधैँ बुझ सबैको मुटु एउटै हुन्छ ॥
सूर्यले संसारमा जति ताप दिए पनि ।
सून्दरताको सूचिमा पहिले नै जुन्छ ॥
जुन धेरै राम्रो हुन्छ यस्तो सूनेपछि ।
बुद्दि लगाई लगाई घाम राजनिति बुन्छ ॥
जति गर्दा पनि सफल नभए पछि ।
विचारा के गरोस् धुर्धुरी रुन्छ ॥







# गजल

✍ *प्रवीण पराजुली, कक्षा ८*

जुवाको कुनै खालमा बस्नु हुन्न ।
नराम्रो यहाँ तालमा बस्नु हुन्न ॥
छर्यो हेर चारा, रमाई असाध्यै ।
परेवा सरी जालमा बस्नु हुन्न ॥
त्यसै स्वादले खाएको तिर्नुपर्छे ।
घिसारी स्वयं, थालमा बस्नु हुन्न ॥
तिमि काम गर्नु रमाएर बस्नु ।
त्यसैले कुनै गालमा बस्नु हुन्न ॥
सबै श्वास फर्ने, हुँदैनन् रे मान्छे ।
म मान्छे हुँ बेहालमा बस्नु हुन्न ॥



# गजल

✍ *सागर लामिछाने, कक्षा ८*

लाग्छ खुसी निकै माथि-माथि रहेछ ।
चोट अनि पीडा हाम्रो साथी रहेछ ॥
करोड पति बनेपनि सबै लुटी गयो ।
अन्त्यमा यो गरिबि नै जाती रहेछ ॥
मान्छे जस्तै काम गर्छ खाना धेरै खान्छ भन्थे ।
अद्भुत त्यस्तो जीव एउटा हात्ती रहेछ ॥
धर्मशास्त्र पढेँ अनि बल्ल बुझेँ मैले ।
पाप र धर्म मात्र हाम्रो साथी रहेछ ॥







# गजल

*विशाल पौडेल, कक्षा ८*

कसैले एउटा काम गरिरहेछ ।
अर्को त्यही बिगार्न लागिरहेछ ॥
परिश्रम विना मान्छे बाँच्दै बाँच्दैन ।
परिश्रम नगरेरै होला! भोकै मरिरहेछ ॥
आफू अघाएको थाहा पाएपछि पनि ।
बाख्रो विचरा निरन्तर चरिरहेछ ॥
देश विकास गर्छु भन्दै आउँछ सत्तामा ।
तर काम भयो विपरीत गोजी भरिरहेछ ॥
उसको शत्रूलाई मित्र बनायो भनेर ।
पाकिस्तानले नेपाललाई आँखा तरिरहेछ ॥



# गजल

*रमेशप्रसाद तिमिल्सिना, कक्षा ६*

बसेको छु पन्छी बनी पिञ्जडामा ।
मलाई बचाऊ न नेपाल आमा ॥
अनेकौँ थिए यी ममा दुःख कष्ट ।
विधीले यही लेख्दियो बाध्यतामा ॥
न ता भर्न सक्ने न ता बाँच्न सक्ने ।
यही भाव पाइन्छ यही दर्दतामा ॥
पिरेको थियो दुःखले जिन्दगीमा ।
त्यसैले लडेको छु एक्लै कुनामा ॥







# गजल

✍ *सौजन्यमणि पौडेल, कक्षा ६*

मान्छे एक्लै तर पनि यहाँ भाग बद्लीरहेछ ।
छैनन् त्यस्ता स्थितिहरू कुनै माग बद्लीरहेछ ॥
क्वैली आफ्ना रहरहरूले पिल्सिएको हुँदामा ।
हाँगो यौटै समय उहि हो राग बद्लीरहेछ ॥
बस्दै एक्लै प्रतिदिन नभको चाँदनी हेर्छु प्यारो ।
भन्छन् मेरा नयन शशिको दाग बद्लीरहेछ ॥
आफ्नै चल्लाहरूसँग कसरि प्रेम आदान हुन्नन् ।
के होला कारण नबुझिने काग बद्लीरहेछ ॥
आमाका ती चरण कहिले माथ नै छोड्दैनन् ।
कस्तो बढ्दो अहम सबको त्याग बद्लीरहेछ ॥



# गजल

✍ *टेकराज रिजाल, कक्षा ७*

भएका छन् सबै यहाँ बुद्धिमानी ।
कोही ठुलो सानो ठान्दै नठानी ॥
कसरी यहाँ मान्छे भए आजभिन्न ।
सबैका ठुला छन् यहाँ कुराकानी ॥
जसका लागि काम गरेथेँ मैले ।
उसैको अगाडी म भएँ बैमानी ॥
पागल छ संसार यहाँ आज पनि ।
उल्टो देख्छ आज यो आँखाको नानी ॥







# गजल

गणेश भण्डारी, कक्षा ८

टिपेँ वाटिकाका सबै फूललाई ।
तिमी भेटिएनौ टिपेँ जूनलाई ॥
म यो चाँदनीको सबै रङ्ग देख्छु ।
सँगै लुट्पुटिन्थेँ सके छुनलाई ॥
जमर्को गर्याछु सँगै खेल्नलाई ।
म मौरी तिमी फूलझैँ हुनलाई ॥
गुनासो विना नै वहाइदिनेछु ।
तिमीले चुसे उष्ण यो खुनलाई ॥



# गजल

अमृत गौतम, कक्षा ८

जो नाच्न जान्दैन उसलाई आँगन टेडो हुन्छ ।
रिस उठ्या बखतमा प्रिय साथी पनि डेडो हुन्छ ॥
जान्नीलाई श्रीखण्ड हो, नजान्नीलाई खुर्पाको बीँड ।
बाँदरको हातमा पर्दा नरिवल पनि गेडो हुन्छ ॥
मान्छेलाई जतिसुकै अर्ती दिँदै हिँडे पनि ।
बुढेसकालमा अर्ती दिने एकोहोरो भेडो हुन्छ ॥
विचार र श्रद्धा गर्ने पण्डित यसो भन्दै थियो ।
भोक लागे लडाएको पिण्ड पनि टेडो हुन्छ ॥







# गजल

✍ *सुरज सापकोटा, कक्षा ९*

म बादल बनी विश्वमा पार्छु पानी ।
तिमी वृक्ष रोपेर रोक्नु फडानी ॥
गरेको छु हत्या न राम्रा सबै काम ।
नकोट्याउनु है बितेका कहानी ॥
चरीझैँ गगनमा म उड्नेछु भन्थेँ ।
सबै लक्ष्य मेरो भयो है खरानी ॥
पिताको वचनलाई मान्ने हराए ।
भएसि रूपैँया चल्यो जिन्दगानी ॥
सधैँ प्रात:मा सूर्य यो चम्कनाले ।
सबैको पियारो बनायो बिहानी ॥



✍ *सरोज अधिकारी, कक्षा ६*

# हाइकु

नदी र मान्छे
आफ्नो तिर्सना मेट्न
बगिरहन्छ ॥

हरियो फाँट
हरिया मान्छेहरू
गाउँतिर छन् ॥

परेको बेला
सहयोग गर्दछन्
महात्माहरू ॥

देशको माटो
कति मीठो वासना
सुँघेर हेर ॥

चाडपर्वमा
पशुहरूको बलि
किन दिइन्छ ॥

सबेरै उठ्छन्
स–साना पक्षीहरू
जाँगरिला छन् ॥







# गजल

✍ *ऋषभ अर्याल, कक्षा ९*

विद्यार्थी हुँ पढ्नलाई मन देऊ शिव ।
साथीभाइ गुरुवर्ग सज्जन देऊ शिव ॥
विद्या भन्दा ठूलो वस्तु केही छैन रे ।
सङ्घर्षले पढ्न सक्ने तन देऊ शिव ॥
विद्याले नै मानिसलाई सभ्य बनाउँछ ।
सदा मलाई विद्यारूपी धन देऊ शिव ॥
विद्या भए मानिसले चन्द्र छुन सक्छ ।
पढ्न कठीन होला लगन देऊ शिव ॥
विद्यालय शान्ति क्षेत्र हुनुपर्छ अब ।
शान्तिको वर्षा हुने गगन देऊ शिव ॥



# गजल

✍ *सन्देश कोइराला, कक्षा ८*

फर्केन छोरो आशु झारेर रोइन् रे ।
मनको पिर मनमा गाँठो पारेर रोइन् रे ॥
परदेशी जीवन अर्काको देश भने झैँ नहुने ।
मनका रहर मनमा कतै बारेर रोइन रे ॥
भत्केको घर चुहिने छानो हेरेर बाटोमा ।
फर्कन्छ भन्ने छोराको आश पारेर रोइन रे ॥
विधिले यस्तै लेखेछ कतै यो मेरो भाग्यमा ।
पिर र चिन्ता गरेर आफैँ हारेर रोइन रे ॥
बाँचेछु भने फर्कन्छु साँच्चै गोधुली साँझमा ।
फर्केन छोरो भनेर आशु झारेर रोइन रे ॥



## गजल

✍ *ऋषिराम पौडेल, कक्षा १०*

झरेर पात झैँ यसै उजाडिएर के गरूँ ।
मिलेन प्रेम नै भने नशा लिएर के गरूँ ॥
पहाडका जडीबुटी लगाइदिन्छु तै पनि ।
हटेन दाग चन्द्रको म आत्तिएर के गरूँ ॥
म जन्मिदा व्यथाहरू तिमीसँगै लुके कि त ।
म सम्झिएर के गरूँ र बिर्सिएर के गरूँ ॥
भरिन्छु आँसुले सँधै तलाउझैँ छु टिल्पिल ।
छ बस्न मन नयनभरी छचल्किएर के गरूँ ॥
बिदा लिएर गइदिनू कि बिर्सिइ अरूसँगै ।
"अपूर्ण" हूँ म पूर्णमाथि मन् दिएर के गरूँ ॥



## गजल

✍ *नीतीश बराल, कक्षा १०*

अहो जिन्दगीले यता पो पुऱ्यायो ।
मलाई अझै देवता पो बनायो ॥
रहरकै म निम्ती हिंडेथेँ परन्तु ।
पुगे लक्ष्यमा लौ रहर नै हरायो ।
अझै बाँच्न इच्छा थियो, कालले चैँ ।
कठै पत्र लेखी मलाई पठायो ॥
सबैले नचाए म नाचीरहेथेँ ।
नदीले पनि भूमरीमा पठायो ॥







# गजल

सुरेशराज पाण्डे, कक्षा ९

बढाएर हलचल हुँदै हुन्न कैल्यै ।
परिश्रम बिना फल हुँदै हुन्न कैल्यै ॥

सबै चीजको जग् सुरक्षित गरेर ।
तिमी चल्नु अलमल हुँदै हुन्न कैल्यै ॥

भयो आगलागी र यो मन डढायो ।
कहाँ खोज्नु दम्कल हुँदै हुन्न कैल्यै ।

सबै काम गर्छौं डराई डराई ।
विचारै छ कमसल हुँदै हुन्न कैल्यै ॥

गजल लेख्न खोजेँ कुनामा बसेर ।
भएको छ खलबल हुँदै हुन्न कैल्यै ॥



